

क्वयेर युथ ग्रुप کُوَییر یُتھَ گُرُپ

**Queer Youth Group**

दर्ता नं : २४४९३५/०७७/०७८

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

---

नेसं ११४१ कछला २४
२०७७ कार्तिक २७







श्री अध्यक्षज्यू,
भाषा आयोग,
यन्ताबुँ, शङ्खमूल, काठमाडौँ।

**विषय : सिमान्कृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषतका व्यक्तिहरू (लैङ्गिक तथा यौनिक अल्पसंख्यक व्यक्तिहरू)को भाषिक अधिकारलाई सम्बोधन गरी यस पत्रका साथ संलग्न गरिएका शब्द र तिनका अर्थहरूलाई नेपाली भाषाको आधिकारिक शब्दकोषमा समावेश गर्न गराउन भाषा अयोग ऐन २०७४ बमोजिम सम्बन्धित निकाय तथा सरोकारवालालाई सिफारिस गरिपाउँ।**

महोदय,

उपरोक्त सम्बन्धमा सिमान्कृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषतका व्यक्तिहरूलाई नेपालको संविधानमा 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक' भनेर सम्बोधन गरिएको यहाँहरूलाई अवगतै होला। विश्व मानचित्रमा यस सिमान्तकृत जनसंख्याको अधिकार क्रमशः स्थापित हुँदै गर्दा नेपालमा पनि यो मुद्दा उठेको धेरै दशक बितिसकेको छ। तर त्यसो हुँदा पनि नेपालको औपचारिक शब्दकोष : नेपाली वृहत् शब्दकोष लगायतमा यस विषयका शब्दहरू समावेश हुन सकेका छैनन्। नेपाल भरी आधिकारिक मानिने यस शब्दकोषमा हाम्रो जनसंख्याको शब्दावली उल्लेख नहुँदा हामी वहिष्कृत महसुस गर्दछौँ भने यसले प्रशासनिक प्रयोगमा पनि यस जनसंख्याका महत्वपूर्ण शब्दावलीहरू चिनिनबाट वञ्चित गराएको छ।

नेपाली वृहत् शब्दकोषमा नेपाल र विश्वका विभिन्न क्षेत्रहरूबाट भाषाको विकास भई नेपाली भाषा सम्पन्न बनाउन योगदान पुर्याएझैँ यस जनसंख्या सम्बन्धीका शब्दावलीहरूले पनि नेपाली भाषाको सम्पन्नतामा योगदान पुर्याएको छ। त्यसै गरी यस जनसंख्या सम्बन्धीका शब्दावलीहरू नेपाली वृहत् शब्दकोषमा समावेश हुँदा विशेष गरी नेपाल अधिराज्य भरका सरकारी कर्मचारी र प्रशासनिक कामकाजमा संलग्न व्यक्तिहरूले यस विषय सम्बन्धी जान्न बुझ्न अत्यन्तै मद्दत गर्छ र यसले हामी जस्ता विविध लैङ्गिकता र यौनिकताका व्यक्तिहरूको स्वीकार्यता र जनचेतनामा समेत सकरात्मक प्रभाव पार्नेछ भन्ने हामी विश्वस्त छौँ। त्यसका साथै प्रशासनिक कामकाजका दौरान यस विषयमा कसैमा अन्योलता आएपनि यस नेपाली वृहत् शब्दकोषले मद्दत गर्न सक्ने पनि भयो।

हामीले यस पत्र साथ संलग्न गरेका शब्दावलीहरू यस जनसंख्या सम्बन्धी अत्यन्तै आधारभूत शब्दावली हुन् र नेपाली वृहत् शब्दकोषमा समावेश गर्नु यस सिमान्तकृत जनसंख्याको भाषिक अधिकारमा पहिलो कदम हुनेछ।

---



ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९१
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup



ཀྭཡེར་ཡུཐ་གྲུཔ

क्वयेर युथ ग्रुप كُوَيِيرَ يُتهَ گُرُپ

**Queer Youth Group**

दर्ता नं : २४४९३५/०७७/०७८

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

अन्तर्राष्ट्रिय मूल्य मान्यताहरू बमोजिम, जस्तै संयुक्त राष्ट्र संघद्वारा प्रतिपादित मूल्य मान्यता एवं सिमान्कृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषतको विश्वव्यापी संजालबाट प्रतिपादित मान्यताहरूसँग संदिबद्ध अवधारणाहरू विगत धेरै वर्षदेखि नेपालमा नेपाली लगायतका भाषाहरूमा प्रयोग गर्दै आएकाछौँ। तसर्थ, त्यसैमा आधारित रही हामीले शब्द र त्यसका अर्थहरू समावेश गरी दस्तावेज तयार पारेकाछौँ। त्यसका साथै थप अध्ययनका लागि हामीले विस्तृत व्याख्या गरिएको दस्तावेज पनि संलग्न गरेकाछौँ।

सिमान्कृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषतका व्यक्तिहरू (लैङ्गिक तथा यौनिक अल्पसंख्यक व्यक्तिहरू)को भाषिक अधिकारलाई सम्बोधन गरी भाषा अयोग ऐन २०७४ बमोजिम यस भाषा आयोगलाई सम्बन्धित निकाय तथा सरोकारवालालाई प्रस्तुत उक्त शब्द र त्यसका अर्थ नेपाली वृहत् शब्दकोष लागयतका शब्दकोषहरू समावेश गर्न गराउनका निम्ति सिफारिस, पत्राकार लगायत आवश्यक कार्यवाही गरिपाउँ भनी यो निवेदन पेश गर्दछौँ।

हामीले तयार पारेका शब्दार्थहरू नेपालमा मात्र नभई संयुक्त राष्ट्र संघ र विश्वव्यापी प्रयोगमा पनि प्रतिपादन भएका छन् । यी शब्दार्थहरू हाम्रो समाजको व्यापक बुझाईभन्दा फरक हुन सक्छ र यद्यपि हालको सामाजिक बुझाईबाट सम्पादन गरिएमा पुनः समाजको रूढिवादी र हामीलाई अमैत्रीपूर्ण हुनका साथै सही ढङ्गले सम्बोधन नहुने वा अपमानजनक ढङ्गले सम्बोधन हुन सक्ने विषयलाई मध्यनजरमा राखी मानक हिज्जे र व्याकरणात्मक सम्पादन बाहेक शब्दार्थमा अरु परिवर्तन नगर्न समेत सिफारिसमा समावेश गर्न अनुरोध गर्दछौँ।

**संलग्न कागजातहरू :**

१) शब्दकोषमा समावेश गर्न अनुरोध गरिएका शब्दार्थहरू - पसं २

२) सन्दर्भ - पसं १

३) यस विषयमा विस्तृत व्याख्या गरिएको दस्तावेज - पसं २१

**भवदीय,**

रुक्शना




रुक्शना कपाली,
कार्यकारी निर्देशक



ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup

# यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता सम्बन्धीका आधारभूत शब्दवाली र तिनका परिभाषाहरू (शब्दकोषहरूका लागि)

*[Alphabetical order मा राखिएको]*

**अन्तरलिङ्गी (Intersex) :** पुलिङ्गी वा स्त्रीलिङ्गी शरीरका परम्परागत धारणाहरूमा नअटाउने यौन विशेषताहरू (यौनाङ्ग, प्रजनन ग्रन्थी तथा गुणसुत्रको ढाँचा) भएका व्यक्तिहरू ।

**अयौनिक (Asexual) :** कुनै प्रकारको यौन तथा/वा प्रणयात्मक आकर्षण महसुस नगर्ने व्यक्ति ।

**क्वयेर (Queer)** : पर्यायवाची शब्द - सिमान्कृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति

**गैर-द्वयसांखिक लैङ्गिक पहिचान ( Non-binary gender identities ) :** पुरुष वा महिलाको परिभाषामा नअटाउने विविध लैङ्गिक पहिचानहरू। पुरुष वा महिला भन्दा परका लैङ्गिक पहिचानहरू ।

**जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिंग (Sex assigned at birth) :** सामाजिक मूल्य मान्यता अनुसार कुनै बच्चा जन्मन बित्तिकै नीजको यौन अङ्ग वा विशेषताको आधारमा नीजलाई केटा वा केटी भनेर गरिने निर्धारण।

**तेस्रोलिङ्गी (Third Gender) :** दक्षिण एसियाली धर्म संस्कृति अनुसार आफूलाई महिला वा पुरुष भन्दा भिन्न भनी पहिचान गर्ने आफ्नो छुट्टै समाज, इतिहास, स्थानमा बसोबास, रीतिरिवाज, चालचलन, परम्परा र भाषिका समेत भएका लैङ्गिक समुदाय ।

**त्याचलैङ्गिक व्यक्ति (Cisgender person) :** जन्मँदा यौनाङ्गका आधारमा इङ्गित गरिएको लिंगसँग मेल खाने लैङ्गिक पहिचान भएका व्यक्तिहरू।

**द्वियौनिक (Bisexual) :** आफू भन्दा फरक लैङ्गिकता र आफू जस्तै लैङ्गिकता दुबै प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने व्यक्ति ।

**पारलैङ्गिक पुरुष (Transgender Male / Trans man ) :** ती पुरुषहरू जसलाई जन्मँदा यौनाङ्गको आधारमा स्त्रीलिङ्गी इङ्गित गरिएको थियो । योनी लिएर जन्मेका हुनाले समाजले उनीहरूलाई केटी वा बालिका भनेर इङ्गित गर्दछ, र हुर्कने बढ्ने क्रममा हुने लैङ्गिक अनुभव र प्रस्तुतीकरणको हकमा केटा वा पुरुषको गुण विकास हुन्छ र आफूलाई पुरुष भनी पहिचान गर्ने व्यक्ति ।

**पारलैङ्गिक महिला (Transgender Female / Trans woman ) :** ती महिलाहरू जसलाई जन्मँदा यौनाङ्गको आधारमा पुलिङ्गी इङ्गित गरिएको थियो । शिश्न लिएर जन्मेका हुनाले समाजले उनीहरूलाई केटा वा बालक भनेर इङ्गित गर्दछ, र हुर्कने बढ्ने क्रममा हुने लैङ्गिक अनुभव र

प्रस्तुतीकरणको हकमा केटी वा महिलाको गुण विकास हुन्छ र आफूलाई महिला भनी पहिचान पहिचान गर्ने व्यक्ति ।

**पारलैङ्गिक व्यक्ति (Transgender person) :** जन्मँदा यौनाङ्गका आधारमा इङ्गित गरिएको लिंगसँग मेल नखाने लैङ्गिक पहिचान भएका व्यक्तिहरू ।

**यौन अभिमुखिकरण (Sexual orientation) :** कुनै व्यक्ति कुन लैङ्गिकताका अरु व्यक्तिहरू तर्फ यौन तथा प्रणयात्मक (sexual and romantic) आकर्षण महसुस गर्दछ भन्ने आधारमा नीजको यौनिक पहिचान ।

**यौन विशेषता (Sex characteristics) :** मानिसको यौनाङ्ग वा प्रजनन अङ्गबाट छुट्टिने शारीरिकी भिन्नता ।

**लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक (Gender and Sexual Minorities)** : पर्यायवाची शब्द - सिमान्कृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति

**लैङ्गिक पहिचान (Gender identity) :** हरेक व्यक्तिको भित्री मन वा अन्तरात्माबाट लैङ्गिकता सम्बन्धी आएको व्यक्तिगत अनुभूती र अनुभव एवं भित्री मनबाट आएको आन्तरिक बोध।

**विषमयौनिक (Heterosexual/Straight) :** आफू भन्दा फरक लैङ्गिकता प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने व्यक्ति ।

**समयौनिक (Homosexual) :** आफू जस्तै / उस्तै लैङ्गिकता प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने व्यक्ति (समयौनिक पुरुष : Gay, समयौनिक महिला : Lesbian) ।

**सर्वयौनिक (Pansexual) :** सबै खाले लैङ्गिकता प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने व्यक्ति वा यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्न लैङ्गिकता बाधा नपर्ने व्यक्ति ।

**सिमान्कृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (People of Marginalized Sexual Orientation, Gender Identity and Sex Characteristics) :** यौन अभिमुखिकरणमा विपरीत लैङ्गिकता तर्फ हुने आकर्षण बाहेकका विविधताहरू, लैङ्गिक पहिचानमा जन्मँदा यौनाङ्गको आधारमा इङ्गित गरिएको लिङ्गसँग मेल खाने लैङ्गिक पहिचान बाहेकका विविधताहरू र यौन विशेषतामा अन्तरलिङ्गी विविधताका व्यक्तिहरूलाई जनाइने छाता शब्द । यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र/वा यौन विशेषताका आधारमा सामाजिक सिमान्तिकरणमा परेका जनसंख्या ।

*** १७ असार २०७७, 1 July 2020 ***

# सन्दर्भ सूची


1. Yogyakarta Principles, यस विषय सम्बन्धिको अन्तर्राष्ट्रिय सिद्दान्त
   https://yogyakartaprinciples.org/
2. यस विषयमा संयुक्त राष्ट्र संघद्वारा जारी गरिएका तथ्यपत्रहरू
   A. UN Transgender Fact Sheet : https://www.unfe.org/wp-content/uploads/2019/03/Transgender_Factsheet_English.pdf
   B. UN Intersex Fact Sheet : https://www.unfe.org/wp-content/uploads/2017/05/UNFE-Intersex.pdf
   C. यस सम्बन्धि संयुक्त राष्ट्र संघको अभियान
   https://www.unfe.org/
3. NYC Commission on Human Rights Legal Enforcement Guidance on Discrimination on the Basis of Gender Identity or Expression: Local Law No. 3 (2002); N.Y.C. Admin. Code § 8-102
   https://www1.nyc.gov/site/cchr/law/legal-guidances-gender-identity-expression.page
4. California Gender Recognition Act - Senate Bill No. 179 CHAPTER 853
   https://leginfo.legislature.ca.gov/faces/billNavClient.xhtml?bill_id=201720180SB179
5. World Health Organization - FAQ on Health and Sexual Diversity An Introduction to Key Concepts
   https://www.who.int/gender-equity-rights/news/20170329-health-and-sexual-diversity-faq.pdf?ua=1
6. American Psychological Association : Transgender People, Gender Identity and Gender Expression
   https://www.apa.org/topics/lgbt/transgender
7. Sexual Orientation & Homosexuality - American Psychological Association
   https://www.apa.org/topics/lgbt/orientation
8. LGBT.net - Glossary
   http://www.lgbtnet.dk/why-lgbt/glossary
9. Glossary of Terms - Transgender (GLAAD Media Reference Guide)
   https://www.glaad.org/reference/transgender
10. Stonewall Foundation
    https://www.stonewall.org.uk/help-advice/glossary-terms
11. Human Rights Campaign
    https://www.hrc.org/resources/glossary-of-terms